ज्यो.पं.प्राणनाथ त्रिपाठिशर्मणा संस्थापितम्

वसुनगाभ्रनेत्र २०७८ मितविक्रमाब्दस्य नेपालदेशीयम्

नेपालपञ्चाङ्गनिर्णायकसमितिनिर्णीतगणितव्रतपर्वादिसहितम्




# हिमाल पञ्चाङ्गम्

राजा- भौमः मन्त्री- भौमः

श्रीशालिवाहनीयशकः १९४३
ईसवीय सन् २०२१-२२
राक्षसनाम संवत्सरः ४९
श्रीनेपालसंवत् ११४१-४२
सृष्टितोगताब्दाः १९५५८८५१२२
कलेर्गताब्दाः ५१२२
पञ्चाङ्ग स्थापिताब्दाः ६८



पञ्चाङ्गकर्ता-
पं.प्राणनाथतनुज पद्मनाभत्रिपाठि
सि.ज्यो.आचार्य पोखरा अघौँ
पोखरा म.न.पा.-२६ बुढीबजार,
कास्की, गण्डकी प्रदेश, नेपाल
का.म.न.पा.-३२, कोटेश्वर
काठमाण्डौ, नेपाल
फो.नं. ०१-५१०००४२

**श्रद्धापुष्पम्**

येनाऽहं बहुपाठितोऽनवरतं त्रिस्कन्धकं ज्यौतिषं-
पञ्चाङ्गं प्रचलत्यदो बहुदिनाद्येनैव संस्थापितम् ।
स्वर्याते पितरि प्रसिद्धगणके श्री प्राणनाथाभिधे
श्रद्धापुष्पसमर्पणं प्रकुरुते श्री पद्मनाभः सुतः ॥

**श्रीपद्मनाभ तनुजः**

डा.विश्वनाथत्रिपाठिफलितसिद्धान्त
ज्योतिषाचार्येण-सम्पादितम् ।
डा.सन्तोषत्रिपाठिशर्मणा-प्रकाशितम् ।

ोखरा म.न.पा.-२८,अघौँकालिकास्थान निवासी स्व.पं.प्राणनाथ-तनुज-पं.पद्मनाभत्रिपाठिशर्मणा विरचितम्

ूचना: पञ्चाङ्ग खरिदगर्दा यसमा टाँसिएको सरस्वतीको चित्र भएको बहुरङ्गी होलोग्राम स्टिकर अवश्य हेर्नुहोला ।→

मूल्य रू.९०।-

## विषयसूची


| क्र. | विषय | पृष्ठ |
|---|---|---|
| १. | वर्ष व्यवस्था, जगल्लग्न | २ |
| २. | सर्वार्थसिद्धि, मास-राशिफल | ४-८ |
| ३. | होडाचक्र | ९ |
| ४. | गुणचक्र | १०-११ |
| ५. | प्रथम तथा दशम लग्न सारिणी | १२-१३ |
| ६. | विभिन्न जिल्लामा हुने समयान्तर | १४ |
| ७. | सप्तवर्ग साधन विधि | १५ |
| ८. | चर सारिणी | १६-१७ |
| ९. | विंशोत्तरी, त्रिभागी, योगिनी दशा-अन्तर्दशा चक्र | १८ |
| १०. | ग्रहमैत्रादि विविध चक्र | १९ |
| ११. | संवत्सरफल, आयव्यय, मेष-तुला-विषुवत्चक्र | २० |
| १२. | विवाह, व्रतबन्ध आदि विविध साइतहरू | २१-२२ |
| १३. | ग्रहका मन्त्र, दान, जप तथा विभिन्न चक्रहरू | २३-२४ |
| १४. | ग्रहण सूचना तथा बारवेला | २५ |
| १५. | पञ्चाङ्ग पक्ष तथा मासका विविधटिप्पणी | २६-५१ |
| १६. | दैनिकलग्न तथा ग्रहस्पष्ट सारिणी | ५२-६३ |
| १७. | संक्रान्तिफल | ६४-६६ |
| १८. | शिववास, अग्निवास सारिणी, ग्रहमुखचक्र आदि | ६७ |
| १९. | षड्वर्गशोधन, वृषवास्तु, कलशादि विभिन्न चक्रहरू | ६८ |
| २०. | द्वादशभावस्थ ग्रहफल, घातचक्रादि, विभिन्न चक्रहरू | ६९ |
| २१. | जन्मोत्सव पूजा तथा विविध सामग्री | ७० |
| २२. | विभिन्न मुहूर्त्तहरू | ७१-७३ |


### नेपाल पञ्चाङ्ग निर्णायक समितिको सूचना

पञ्चाङ्गमा समावेश भएका विषयवस्तु मध्ये पञ्चाङ्गका घ.प./घ.मि., चाडपर्वहरू, विवाह-व्रतबंधआदि मूहुर्त्तहरू संक्रान्तिफल, आयव्यय, विषुवत्फल, जगल्लग्नफल, वर-वधुमेलापकसारिणी, प्रथम-दशम लग्नसारिणी, साप्ताहिक ग्रहस्पष्ट, दैनिक लग्न सारिणी, दैनिक ग्रहस्पष्ट, उदयास्त, पादचार, पापांश, पापर्क्ष, अग्नि रूद्रीजुर्ने, गृहारम्भ, गृहप्रवेश, अन्नप्राशन, दोकान खाल्ने, न्वागी खाने, मुङ्गीलिने मुहूर्त्त, सर्वार्थसिद्धियोग, होडाचक्र, संस्कृत वर्षफल, विंशोपका र ग्रहण, समितिमा छलफलभई निर्णय भएका विषय हुन्। यी बाहेक अन्य विषयवस्तुहरू समितिमा निर्णय नभएका चाडपर्वहरू र छपाइमा फरक परेमा पञ्चाङ्गकार स्वयं जिम्मेवार हुनुहुनेछ। पञ्चाङ्गमा उल्लेखित चाडपर्वहरू शास्त्र र परम्पराका आधारमा निर्णय भएका हुन् । यस भन्दा फरक दिन मनाउने परम्परा भएका व्यक्ति वा समुदायले आफ्नो परम्पराअनुसार चाडपर्व मनाउन सक्नेछन्।



नेपाल सरकार
संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय

# नेपाल पञ्चाङ्ग निर्णायक समिति

सेतोपुल, ... काठमाडौं, नेपाल    फोन नं. : ४५११०१३

प. सं. ०७७/७८    मिति : २०७७/१०/१६
च.नं. ३१

## स्वीकृति र शुभकामना

वेदशास्त्रका षडङ्गहरूमा श्रेष्ठ विज्ञानमय ज्योतिषशास्त्र अनुसार नेपाली जनताको निम्ति अत्यन्त उपयोगी पञ्चाङ्ग(पात्रो) निर्माण गरिन्छ। निर्मित पञ्चाङ्गका तिथ्यादिका घडिपलाका आधारमा धर्मशास्त्र मुताविक चाड-पर्व आदि समस्त कृत्यको निर्णय गरिन्छ । निर्णीत कृत्य सम्पादनले मानव जीवनलाई मर्यादित, सार्थक, समुन्नत एवं समुज्ज्वल तुल्याउँछ। आ-आफ्नो धर्म कर्म संस्कार सस्कृति प्रति श्रद्धा, आस्था, निष्ठा र विश्वास पैदा गर्दछ। राष्ट्र राष्ट्रियताको संरक्षणमा प्रतिबद्ध गराउँछ । मानवमात्रमा परस्परमा मेलमिलाप र एकताको भाव उत्पन्न गराउँछ । यस्तो उच्चविचार उदात्तभाव पैदागराउने यस वर्षको पञ्चाङ्गमा राख्नुपर्ने चाड-बाड, व्रत-पर्व, जात्रा-मात्रा, मेला, उत्सव आदि कृत्य निर्णयगर्ने कार्यमा विचार विमर्श गर्न नेपाल पञ्चाङ्ग निर्णायक समितिले ज्योतिषशास्त्र, धर्मशास्त्र, तन्त्रशास्त्रका दोषज्ञहरू र विषय सम्बद्ध अन्य विद्वान्हरूलाई आमन्त्रण गरी उहाँहरूसँग परामर्श लिई समस्त कृत्य निर्णय गरिएको छ। सो निर्णयको आधारमा ज्यो. पं. पद्मनाभ त्रिपाठीलाई यसवर्ष २०७८ सालको हिमाल पञ्चाङ्ग प्रकाशित गर्न स्वीकृति प्रदान गरिएको छ।

चाड-पर्व निर्णय गर्ने कार्यमा सहभागी हुनेहरूमा आमन्त्रित विज्ञजनका अतिरिक्त समितिका अध्यक्ष प्रा.डा. रामचन्द्र गौतम, सदस्यहरू- प्रा.डा. साम्बराज आचार्य, प्रा.दिनेशराज पन्त, डा.जगमान गुरूङ्ग, प्रा.श्रीकृष्ण अधिकारी, डा.खिलनाथ बस्ताकोटी, दैवज्ञ. कीर्तिमदन जोशी, ज्यो.विद्याकुमारी वज्राचार्य एवं सदस्य-सचिव सूर्यप्रसाद ढुङ्गेल हुनुहुन्छ । पञ्चाङ्ग प्रणेताहरू ज्यो. सूर्यनाथ पन्त, ज्यो. पं. विश्वराम शर्मा, श्री मुरारिराज पाण्डे, ज्यो.पं पद्मनाभ त्रिपाठी, ज्यो. डिल्लीराज जोशी, ज्यो. दिव्यपुरूष ढकाल, डा.लोकराज पौडेल, ज्यो. शशिधर जोशी, ज्यो.दामोदर जोशी, ज्यो. श्रीकेश कौशिक, दैवज्ञ.कीर्तिकिरण जोशी, दैवज्ञ.सिद्धिलक्ष्मी व्यञ्जनकार, ज्यो.पं. चेतराज उपाध्याय हुनुहुन्छ।

शास्त्र र परम्पराका पूर्ण आधारमा निर्णय लिई स्वीकृत गरिएका यी पञ्चाङ्ग बाहेक अन्य पञ्चाङ्गमा उल्लिखित चाडपर्व, जात्रा-मात्रा आदिका सम्बन्धमा नेपाल पञ्चाङ्ग निर्णायक समिति जवाफदेही हुनेछैन । अत: यस समितिबाट स्वीकृत पञ्चाङ्गहरूको मात्र उपयोग गर्नुहुन र छपाई वा अन्यकारणबाट कनै त्रुटि भेटिएमा वा संशय हुनगएमा यस समितिलाई जनाउ दिई सहयोग गर्नुहुन समेत अनुरोध गर्दै नयाँ वर्ष २०७८ को सु-अवसरमा यो समिति नेपाली सबैजनहरूप्रति हार्दिक शुभकामना व्यक्त गर्दछ।

रामचन्द्र गौतम
प्रा.डा. रामचन्द्र गौतम
अध्यक्ष

## गुरु-शुक्रको अस्तमा गर्न हुने र नहुने कर्महरू

गुरु र शुक्र अस्ताएको, बालक एवं वृद्ध भएको बखतमा स्नान, सन्ध्या, पाञ्चायन पूजा, चातुर्मास्यव्रत, तुलसी पूजा एवं विवाह, तुलसीको मठमा हवन, स्वस्ति-शान्ति, रामनवमी आदिको व्रत, अर्को गति नभएको नित्यकर्महरू र श्राद्ध-तर्पण, आशौच, मृतकको क्रिया, ग्रहण स्नानादि नैमित्तिक कर्महरू गर्नुहुन्छ। यी बाहेक इनार, बगैचा, तलाउ, कुवा आदि निर्माण गर्नु, गृहारम्भ र गृहप्रवेश, चान्द्रायणादि व्रतको आरम्भ र उद्यापन, तुलादानादि महादान, सोमयाग, अष्टकाश्राद्ध, आग्रायणेष्टि, जलशाला निर्माण, प्रथम पाककर्म, उपनिषद्व्रत, वेदव्रत, काम्यवृषोत्सर्ग, शिशुको अतिक्रान्त संस्कार, दीक्षाग्रहण, विवाह, व्रतबन्ध, कहिल्यै नगरिएको देवदर्शन, कहिल्यै नगएको तीर्थ जानु, अग्निहोत्र लिनु, चातुर्मास्ययाग, समावर्तन, दीव्यपरीक्षा त्यस्तै सप्ताह नवाहादि पुराण लगाउनु, मन्दिर निर्माणको आरम्भ, देवता स्थापन प्राणप्रतिष्ठा आदि अन्य दिनमा पनि गर्न पाइने कुनै काम्य कर्म गुरु-शुक्रको अस्त तिनको बालत्व तथा वृद्धत्वमा, क्षयमास-मलमासमा र विश्वघस्रपक्ष (१३ दिनको पक्ष)-मा पनि गर्न हुँदैन।

(सन्दर्भ :- १. मुहूर्तचिन्तामणि २. पुरुषार्थ चिन्तामणि ३. निर्णय सिन्धु)


पञ्चाङ्ग सम्बन्धी जिज्ञासा भएमा
९८४४९१३५८८, ९८४१५९८९००, ०१-५१०००४२
**email :**
vntripathipkr@gmail.com




बिष्णुचित्त अधिकारी

# वि०सं० २०७८ सालको मासिक भविष्यफल

**वैशाख**:यस मासमा ग्रहगोचर साधारणतया सन्तोषकारक छन्।मंगलवासरीय अमावाश्या र सूर्यसंक्रमण योगले यान दुर्घटना अग्निकाण्ड वा कुनै शासकीय समस्या आदिको संकेत गर्नेछ जसले धनजनको क्षति हुन सक्ने देखिन्छ।मेषको सूर्यले कपास,सुन,चाँदी,तेल,लौहधातु,सूतीवस्त्र,रक्तचन्दन,मेथी आदि वस्तु महँगो गराउनेछ।तेस्रो मंगल शासकीय शिथिलता र अकर्मण्यतातर्फ संकेत गर्दछ, कहींकतै रोगभय, पशुचौपायामा रोगको प्रकोप दुग्धजन्यवस्तुको अभाव,मुद्राविनिमयमा उतारचढाव होला। सामान्यभन्दा गरम मौसम रहला।पुँस्त्री योगबाट १,६,७,८,१०,१३,२९,३० गते राम्रो वर्षाको योग देखिन्छ।

**मासको दान**: सातु जल(शर्वत आदि), पंखा, छाता, धर्मघट,उपानह (जुत्ता,चप्पल)आदिको दान,विश्रामस्थलको निर्माण उचित छ।

**ज्येष्ठ**: यस मासको जागतिक परिस्थितिले सामान्यतः समताको आभास गराएको छ।बिहीवारको औंसी र शुक्रवारको सूर्य संक्रमणले गर्दा सामान्य जनमानसलाई केही सहजता र बजारभाउमा पनि केही समर्घता आउने छ। सेयर बजारमा पनि केही उत्साहजनक वातावरण आउने, श्लेषा नक्षत्र पापग्रहको वेधका कारण मोती,माणिक्य,सुन,चाँदी,रसादि पदार्थ,धान्य,तेलआदिमा तेजी देखिएला। वृषराशिका सूर्यले गँहू,जौ,चना, गुड, घृत, तिल, वेल, आलसी, सुत,सन,रसवस्तु आदि वस्तुमा तेजी रहला। जलाभाव, गर्मीको प्रकोप, उष्णवायु बतासको प्रकोप भए पनि २,६,८,१०,२५,३१ गते जलवर्षणको योग छ।

**मासको दान**: दही-भात,साथै गर्मी याममा हितकर वस्तुहरु पंखा,छाता,आदिको दान,वरपिपलको चौतारी निर्माण,पिपलमा जलार्पणले वंशवृद्धि हुन्छ भन्ने मान्यता छ।

**आषाढ**:यस मासका ग्रहस्थिति मध्यमजस्ता छन्। शनिबारको औंसी र मंगलबारको संक्रान्तिले गर्दा राज्य-सञ्चालनमा केही विषमता हुनसक्ने,अग्निकाण्ड वा यान दुर्घटनाको सम्भावना, अतिवर्षाका कारण बाढी पहिरोको सम्भावना पनि देखिन्छ।अष्टम राहुले जनस्वास्थ्यमा केही प्रतिकूल स्थितिको आभास हुनेछ। आद्राको सूर्यले रूई, सूत,कपास चीनी,तेल, धान्य, तामा,चाँदी आदि पदार्थमा तेजी, रातो वस्तुहरुमा अत्यन्त तेजी, मुद्रा विनिमय र सुवर्णमा तेजी हुनेछ। वर्षेबालीमा समता देखिएला।कृत्रिम अभावले गर्दा दैनिक उपभोग्य पदार्थमा समस्या, प्राकृतिक इन्धनमा निकै समस्याको वातावरण देखिएला।वर्षा विषमता भए तापनि १,८,१६,२१-२५गते समुचित जलवर्षणको योग छ।**मासको दान**: अमलाको मुरब्बा वा अमला,कपूर र चन्दन, पुस्तक, साथै गर्मी याममा हितकर वस्तुहरुको दान गर्नु शुभ छ।

**श्रावण**: यस मासमा ग्रहस्थिति साधारणतया राम्रा जस्ता देखिएका छन्।शुक्रवारको कर्कसंक्रान्ति तथा रविवारको औंशीले राज्यव्यवस्थामा केही प्रबन्धको आभास, तर नवीन करभारले जनतामा आक्रोश र निराशा पनि व्याप्त हुन जाला। जलजनित प्रकोपले आवागमनमा विषमता र नयाँ रोगव्याधको प्रकोप हुन सक्ला। तिल, तेल, सस्यौं,गुड,सुठो,नरीवल,सुन,चाँदी आदिमा केही समर्घता हुनेछ।गुड,रूई,सूतीकपडा, नून,तेल आदिमा तेजी रहने छ, सेयरबजार सम रहला।वर्षेबाली सामान्यत:राम्रो र हनेछ। वर्षाविषमको आभास भए पनि पुँस्त्री योगबाट १,६,७,१०,१२,१६गते उचित जलवर्षण योग छ।

**मासको दान**: यस मासमा शाक(साग)र खीर दानको विशेष महत्व छ। वस्त्र,घृत,दूध,वनौषधि,रत्न,यज्ञोपवित आदिको दान, विश्रामस्थलको निर्माण,ब्राम्हणलाई पायसको भोजनले वंशवृद्धि हुन्छ भन्ने मान्यता छ।

**भाद्र**: मासको अवस्था सर्वसाधारणका लागि सामान्यतः मध्यमजस्तो मात्र छ। मंगलवारको सूर्यसंक्रमण र मंगलवारको औंशीले सामान्य जनमानसमा तनावको कारक, प्रतिकूल मौसमी अवस्था, दैनिक उपभोग्य वस्तुहरुमा केही अस्तव्यस्तता आदि देखिन्छ। यान दुर्घटना,बाढीपहिरोको प्रकोप र धनजनको क्षतिको सामना गर्नुपर्ने होला, क्रूरशासनको भार जनताले भोग्नुपर्ला।मुद्रा विनिमय र सुवर्णमा घटाबढी हुनेछ, सेयर बजार स्थिर रहला। देशको पश्चिमी क्षेत्रमा खाद्यान्नको संकट रहने देखिन्छ। पहिरो,अतिवृष्टि, खण्डवृष्टिको आभास भए पनि पुँस्त्री योगबाट मासको पहिलोभागमा उचित वर्षा होला।

**मासको दान**: यस मासमा खीर, मह, साँवा, दूध, शख्खर आदिको दान गर्नु उचित छ।

**आश्विन**: यस मासमा ग्रहस्थिति सामान्यतया राम्राजस्ता छन्। शुक्रवारको सूर्य संक्रान्ति र बुधवारकोऔंशीको योग परेको छ यो सामान्यतयाः राम्रो जस्तो छ। समुचित वर्षा वर्षेबाली रहेको छ यसले गर्दा कृषकवर्गमा प्रसन्नताको लहर छाउला।देशमा नवीन योजनाको सूत्रपात हुने योग पनि परेको छ साथै कुनै ठुलो परियोजना पूर्ण हुनेछ। शारदीय नवरात्रमा देवीको आगमन घोडामा हुन्छ यसले शासनमा परिवर्त्तन तथा प्रस्थान हात्तीमा हुन्छ यसले समुचित वर्षा वा वर्षेवाली उब्जने तर्फ सङ्केत गर्छ।देशको व्यापारघाटामा क्रमशः सुधार हुनेछ। विप्रेषणको मात्रामा तुलनात्मक रुपमा वृद्धि हुनेछ। सामान्यतः मौसम सफा रहने छ।

**मासको दान**: यस मासमा तिल,घृत,मह,औषधि, पितृनिमित्तक कर्म, ब्राम्हण-ब्राम्हणी भोजन, सिधा दान गर्नु उचित छ।

# वि०सं० २०७८ सालको मासिक भविष्यफल

**कार्त्तिक**: मासमा ग्रहस्थिति साधारणतया मध्यमजस्तो देखिन्छ। रविवारको तुलाराशिमा सूर्य प्रवेश तथा बिहीवार औंशी परेको छ यसले सामान्यतया दैनिकउपयोगका वस्तुहरुमा महँगीको मार पर्ला। सूर्य नीचराशिको भएकाले राज्यका जिम्मेवार पदारोहीहरु आपसी वादविवादमा अल्झने छन्।शासकीय शिथिलता र व्याप्त भ्रष्टाचारले जनता पीडित हुनेछन्।शेयरबजारमा समता देखिन्छ। धान्यादि वर्षेवालीमा भने राम्रो प्रतिफल पाएको हुनाले कृषकवर्ग खुसी हुने देखिन्छ। खाद्यान्नमा समर्घता रहला। पशुचौपायाको मूल्यमा केही वृद्धि हुनजाला। मासका गतिविधि सामान्य र ही मध्यभागमा केही मेघबादल देखिन सक्ला ।

**मासको दान**: मासानां कार्त्तिक:श्रेष्ठ:,यो मास विशेष दीपदानका लागि प्रसिद्ध छ।नित्य चना दान,गाईको सेवा,संध्याकालमा आकाशदीप दान आदि गनलि नरक दर्शन हुँदैन भन्ने मान्यता छ।

**मार्गशीर्ष**:मासका ग्रहस्थिति सामान्य जस्ता छन्, मंगलवारको सूर्यसंक्रमण र शनिवासरीय औंसीको योग राम्रो छैन, यसले सामान्य जनजीवनमा प्रतिकूल प्रभाव हुनेछ।मंगलसूर्य युतिपनि त्यत्ति सकारात्मक हुँदैन। कुनै अप्रिय घटना सुन्नमा आउन सक्छ। स्वाथ्यको क्षेत्रमा सुधारात्मक स्थितिको सिर्जना होला,आर्थिक क्षेत्रमा केही उतार-चढाव हुनेछ। कपास,सुतीकपडा,गहुँ,आदि सुनचाँदी आदि मासान्तमा केही सस्ता हुन जालान् ।खाद्यान्न तथा काष्ठजन्यवस्तुहरु केही सस्तो हुनेछन् ।शीतकालको आभास भएर मासको पहिलो सप्ताहमा केही मन्द झरी जस्तो लाग्ला, अन्य समयमा सामान्यतया आकाश सफा रहला।

**मासको दान**: यस मासमा गुँड, नून, कपास,सुतीवस्त्र,दूध, शख्खर आदिको दान गर्नु उचित छ।

**पौष**: मासको जागतिक परिस्थिति मध्यममात्र छ। आइतवारको धनु संक्रान्तिसंक्रमण र अमायोगले जनमानसमा भय र रोगको संत्रास देला। राज्यव्यवस्थामा शिथिलता, जनधनको हानि, आर्थिकक्षेत्रमा हुने उचारचढावले पनि हुनाले जनमानस त्रस्त र हला।र मूलका सूर्यलि सून,चाँदी, मणिमाणिक्य,खाद्यान्न,तेल, रूई, सूतीवस्त्र आदि महँगा हुन सक्ने छन् ।मुद्राविनिमयमा घटाबढीले वैदेशिक व्यापारमा निकै असर पुग्ला,शेयरबजारमा मन्दी र हला ।शनि-रवियोगले दैनिककार्यमा अस्थिरता,शीर्षस्थ नेतामा असहमति,जनतामा क्लेश वृद्धि, उपाघात आदि हुने देखिन्छ।हिमपात र शीतलहरका कारण सामान्यजीवन केही असहज हुन सक्ला ।

**मासको दान**: यस मासमा सूर्य आराधनाको विशेष महत्व छ। रातोवस्त्र,रक्तचन्दन,तीन्नी(निवार), गुँड, कपास, दूध, शख्खर आदिको दान गर्नु उचित छ।

**माघ**: यस मासमा ग्रहस्थिति सामान्यत: मध्यम जस्ता नै छन् ।भौमअमावास्याको योग त्यत्ति राम्रो छैन, यसले जनतामा कष्ट,पशुचौपायामा रोगभय, दुग्धादि वस्तुमा कमी रहला। जनस्वास्थ्यको क्षेत्रमा भने केही सुधार होला। शनि-सूर्ययुति सामाजिक सौहार्द्रतामा कमी र दुर्घटना आदिको कारक पनि हुनसक्ने छ,लचर शासनव्यवस्था होला। हिमपात शीतलहरी ज्वरकाशादिको रोग भय, दाल,चामल,गहूँ, गुड, चीनी, रूई, घृत, चना, दुग्धजन्य पदार्थ आदिमा सामान्य तेजी आउनेछ। मासको प्रथम सप्ताह र अन्त्यम सप्ताहमा मेघदर्शन वा मन्दझरीको योग छ ।

**मासको दान**: यस मासमा तिलदानको विशेष महत्व छ।कालो तिल र यसबाट बनेका वस्तुहरु तिलकुट,लड्डु आदिको दान तथा स्वयं पनि सेवन गर्ने विधान छ। खिचडी,पान,गुँड,कोइलाको दानको महत्व छ।

**फाल्गुन**: मासमा जागतिक परिस्थिति मध्यमजस्ता मात्र छन्।नवीन विकास परियोजनाको चर्चाले आर्थिकक्षेत्रमा दीर्घकालिक र सकारात्मक परिवर्तनको लक्षण देखिन्छ।बुधवासरीय अमा तथा रविवारको सूर्यसंक्रमण योग जनसामान्यका लागि मध्यम नै रहला, दैनिक उपभोग्य वस्तुहरुमा केही सुगमता रहला, शतभिषा तथा कुम्भका सूर्यले चाँदी, सुन, सन, सूत, कपास, तेल, दाख, जाईफल, रेशम, तील भने महँगा हुनसक्ने छन्। पशुमूल्यमा केही वृद्धि होला।मासान्तमा सुवर्ण, चाँदी, रूई, घृत, चीनी आदि वस्तुको मूल्यमा केही कमी आउने छ।देशको मध्यभागमा केही उथलपुथल होला। समताको प्रकृति रहे पनि मासको अन्तमा मेघ बादल दर्शनको योग छ ।

**मासको दान**: धान, गहुँ, जौ आदि अन्न, तृण(घाँस आदि) तथा मृगचर्म आदि आसन साथै गो सुवर्णादि धातु दानको विधान छ।

**चैत्र**: मासको जागतिक परिस्थिति सन्तोषकारक छ। शुक्रवारको औंसी र सोमवारको सूर्यसंक्रमणले जनतामा सामान्यत: सन्तोषकारक वातावरणको आभास दिनेछ।सामान्यतया शासनमा केही सुधार हुने देखिन्छ। दाल,रूई,सूतीकपडा, तील,तेल,सस्यौं,घृत,ताँमा,पीतल, सुन,चाँदी,धान्य, लौहधातु आदिमा समता हुनेछ,यतिबेला संग्रह गर्नु लाभप्रद नै होला, सामान्य जनजीवन केही सहज होला।शेयरबजारमा केही सुधारात्मक संकेत देखिएला। मौसम परिवर्तनको आभासका साथै मासान्तमा मेघदर्शनयोग छ।

**मासको दान**: गहुँ, जौ आदि अन्न, आँप, लिची आदि फल, आसन, कमण्डलु, जलपात्र, माला–गोमुखी, माटाको घैंटो साथै छत्र–उपानह आदि दानको विधान छ।जलाशय,पौशाला(पौसरा), यात्रीविश्रमालय आदिको निर्माणको पनि महत्व छ।

## सर्वार्थसिद्धि योग सं. २०७८

सर्वार्थसिद्धि योग परेको दिन कार्यारम्भ गरेमा निर्विघ्नतापूर्वक कार्य सफल हुन्छ भन्ने शास्त्रीय वचन छ ।

**वैशाख –**
७ गते ३।२४ बजेपछि
१२ गते ०।५७ बजेसम्म
१५ गते २०।१५ बजेपछि
१६ गते १५।५३ बजेसम्म
१९ गते १४।३३बजेपछि २०।३५बजेसम्म
२६ गते १८।२६ बजेपछि २०।११बजेसम्म

**ज्येष्ठ –**
४ गते ११।२ बजेपछि
९ गते ९।३ बजेसम्म
१६ गते २१।४२ बजेसम्म
२३ गते ३।५८ बजेसम्म

**आषाढ –**
१३ गते ५।३९ बजेसम्म
१८ गते ७।१७ बजेपछि
२० गते ८।१२ बजेसम्म
२३ गते १८।५२ बजेपछि २।५५ बजेसम्म
२७ गते २।१३ बजेसम्म

**श्रावण –**
२ गते २३।५३ बजेपछि
१४ गते १४।४४ बजेपछि
१५ गते ५।३० बजेसम्म र १८।५ बजेपछि
२० गते ४।३१ बजेसम्म
२२ गते ६।४२ बजेपछि १७।२५ बजेसम्म
२४ गते ९।४७ बजेसम्म
३० गते ८।० बजेपछि

**भाद्र –**
८ गते २१।८बजेपछि ४।२२बजेसम्म
१० गते २३।४५ बजेसम्म
१६ गते ११।४६ बजेसम्म
१७ गते १४।१ बजेपछि
१८ गते १५।५३ बजेसम्म
२३ गते १८।८ बजेपछि
२६ गते १४।४० बजेसम्म

**आश्विन –**
१ गते ८।२९पछि ४।४७ बजेसम्म
५ गते ५।४२ बजसम्म
७ गते ७।९पछि १८।३८ बजेसम्म
८ गते ७।२० पछि ९।२ बजेसम्म
१४ गते अहोरात्र

**कार्त्तिक –**
२ गते १३।१३ बजसम्म
४ गते १६।२१ बजेसम्म
११ गते अहोरात्र
१७ गते ७।१४ बजसम्म
२१ गते २।६ बजेपछि
२८ गते २०।३ बजेपछि २०।५५ बजेसम्म
३० गते २२।० बजेपछि

**मार्गशीर्ष –**
६ गते ६।४२ बजेसम्म
९ गते १५।४४ बजेसम्म
१२ गते १८।३ बजेपछि
१९ गते १०।१६ बजेपछि
२६ गते ४।२१बजेसम्म
२८ गते १३।२ बजेसम्म र १।३५ बजेपछि

**पौष –**
३ गते ६।५६ बजेसम्म
११ गते अहोरात्र
१८ गते १६।४७ बजेसम्म
२५ गते ११।५७ बजेसम्म
२७ गते १४।२५ बजेसम्म

**माघ –**
९ गते ६।८ बजेसम्म
१२ गते ५।५० बजेपछि
१३ गते ११।५३ बजेसम्म र २२।४५ बजेपछि ४।१६ बजेसम्म
१६ गते २।३७ बजेपछि
२३ गते २०।२७ बजेपछि
२६ गते १।५२ बजेपछि

**फाल्गुन –**
२ गते ११।५५ बजेपछि
३ गते १३।५६बजेपछि २१।३७ बजेसम्म
८ गते १७।४ बजसम्म
११ गते १३।५७ बजेपछि
१२ गते १२।२६ बजसम्म
२० गते ३।१४ बजेपछि
२२ गते १०।१३बजेसम्म र२२।३४ बजेपछि ५।१५ बजेसम्म
२५ गते ९।७ बजेपछि २।५८ बजसम्म
२९ गते १९।११ बजेपछि २२।५बजसम्म
३० गते १०।५४ बजेपछि २१।१८ बजसम्म

**चैत्र–**
१ गते २३।० बजेसम्म
९ गते २०।३५ बजेसम्म
१३ गते ७।३५ बजेसम्म
२० गते १२।४२ बजेसम्म
२३ गते अहोरात्र
२७ गते ४।३७ बजेसम्म
२९ गते ६।२६ बजेसम्म

***नोट:**अग्रलिखित राशिफलहरू गोचरबाट लेखिएको हो,जन्म वर्ष, गोचर धेरै ग्रहदशाहरूमा जसको प्रवलता हुन्छ उसैको पुरा फल दिने भए तापनि उक्त फल आंशिकरूपमा अवश्य प्राप्त हुनेछ ।*

## सं. २०७८ सालमा साढेसाती शनि विचार

यसवर्ष पुरा वर्षभरी नै शनिदेव मकरराशिमा रहने हुनाले कुम्भराशिलाई आद्य, मकरराशिलाई मध्य तथा धनुराशिलाई अन्त्य साढेसाती शनि दशा रहने छ भने मिथुन तथा तुलाराशिलाई अढैया (८,४) शनि दशा रहने छ।

यसमा जन्मको शनि असल भएमा आकस्मिक लाभ, कार्यसिद्धि, आदि शुभ फल पनि दिने हो तर शनि विशेष दु:खदायी ग्रह भएकोले अपव्यय, दु:ख-परेशानी, कार्यमा विलम्बता, पारिवारिक चिन्ता, स्वास्थ बाधा, मानसिक अशान्ति, पशुचौपायमा हानि नोक्सानी आदि गराउने हुँदा उक्त राशि हुने व्यक्तिहरूले शनिवार व्रत, पीपल पूजा, जलार्पण परिक्रमा, शनिदेवको जप पूजनादि गर्नु-गराउनु राम्रो हुनेछ।

***पीपलमा जल चढाउने मन्त्र:***

**मूलतो ब्रम्हरूपाय मध्यतो विष्णुरूपिणे ।**
**अग्रत: शिवरूपाय अश्वत्थाय नमोनम: ।।**

***प्रार्थना गर्ने मन्त्र:***

**अश्वत्थयस्मिन्त्वयि वृक्षराज: नारायणस्तिष्ठति सर्वकाले ।।**
**अत: श्रुतस्त्वं सततंतरुणां धन्योऽसि चारिष्टविनाशकोऽसि ।।१।।**
**कोणोऽन्तको रौद्रयमोऽथबभ्रु: कृष्ण: शनि: पिंगल मन्दसौरी ।**
**नित्यस्मृतो यो हरते च पीडा तस्मै नम: श्रीरविनन्दनाय ।।२।।**

***शनिको मन्त्रः***

नमस्ते कोणसंस्थाय पिङ्गलाय नमोऽस्तु ते।
नमस्ते विभुरूपाय कृष्णाय च नमोऽस्तु ते।।
नमस्ते रौद्रदेहाय नमस्ते चान्तकाय च।
नमस्ते यमसंज्ञाय नमस्ते सौरये विभो।।
नमस्ते मन्दसंज्ञाय शनैश्चर नमोनमः।

**श्रीमहामृत्यञ्जय मंत्रः**

ॐ हौं ॐजूं सः भूर्भुवःस्वः ॐत्र्यम्बकं यजामहेसुगन्धिंपुष्टिवर्द्धनम्।उर्व्वारुकमिव बन्धनान्मृत्योर्म्मुक्षीयमाऽमृतात्ॐस्वः भुवः भूः ॐ सः जूं हौं ॐ।

# वि०सं० २०७८साल राशिफल

**मेष:** (चु.चे.चो.ला.लि.लु.ले.लो.अ.आद्य नामाक्षर)

तपाँइका ग्रह सामान्यतया राम्रा नै छन्। मित्र तथा शुभचिन्तकहरूका सहयोगले कामकार्यमा सफलता, मान सम्मानको अभ्युदय, धनधान्यको वृद्धि, मानसिक प्रसन्नता, शारीरिक स्वास्थ्य उत्तम, शैक्षिकक्षेत्रमा सफलता प्राप्ति, पशुचौपाया र कृषिकार्यबाट पनि उचित लाभको संभावना रहेको छ। शनि दशम हुनेहुनाले सरकारीकाममा विशेष सावधानी अपेक्षित देखिन्छ। आश्विन १४ गतेसम्म एकादश गुरुको अनुकूलताले धार्मिककृत्य तथा अध्ययन-अध्यापनमा सफलता मिल्ला, कुनै मान पदवी पनि पाइएला,मनमा उत्साह र उमंगको सञ्चार होला साथीभाइ र बन्धुबान्धवको सहयोग शुभकारक रहला ।केतु भने त्यति अनुकूल छैन पेटसम्बन्धी रोगले समस्या दिनसक्ला । जागिर र शिपमूलक कार्यमा विशेष सफलता मिल्नेछ ।

**वृष:** (इ.उ.ए.ओ.वा.वि.वू.वे.वो. आद्य नामाक्षर)

तपाँइका ग्रहस्थिति साधारणतया मध्यमजस्ता छन्। परिवारबाट सहयोग र सद्भाव,वाहन,पशु चौपाया र कृषि आदिबाट राम्रो प्रतिफल प्राप्त हुने योग छ। वर्ष प्रारम्भबाट आश्विन १४गतेसम्म दशम गुरुले राज्यसम्बन्धित कार्य वा कुनै पनि सरकारी कार्यमा अत्यन्त सफलता मिल्ला, जागिरमा अप्रत्याशित लाभ र पदोन्नति होला। जग्गा जमीन सम्बन्धित काममा पनि मनग्गै लाभ होला । चैत्र १५ गतेसम्म पहिलो राहु र सातौं केतुले तपाइलाई त्यत्ति सहयोग गर्ने छैनन्,दुवै दम्पतिलाई पेट सम्बन्धी व्याधीको प्रकोप हुन सक्ला अतः स्वास्थ्यमा विशेष सावधानी अपेक्षित छ। गुरुको अनुकूलताले अध्यापनकार्य, धार्मिककार्य, तीर्थ-व्रतादिकृत्य सफल होलान् , शरीरमा कान्ति र मनमा शान्ति छाउला । वैतनिक, शैक्षिक र श्रमिकमार्ग फलदायक रहने छन् ।

**मिथुन:** (क.कि.कु.घ.(ङ=गं)छ.के.को.ह. आद्य नामाक्षर)

तपाँइका ग्रह सामान्यतया त्यत्ति राम्रा छैनन् । गोचरबाट आठौं शनि आफ्नो अनुकूल नहोला । कामकार्यमा विलम्बता, कुनै पनि काम राम्रोसँग सम्पन्न नहुने, मानसिक अशान्ति, अपव्यय, आफ्नै इष्टमित्रबाट धोका पाइने, व्यर्थभ्रमण, अपयश आइपर्ने आदि भए पनि स्वव्यवसाय र कृषिकार्यबाट आंशिक लाभ मिल्ला ।

वर्षारम्भबाट आश्विन १४ गतेसम्म नवौं गुरु केही अनुकूल हुनाले अध्ययन अध्यापन र अन्य शैक्षिक र धार्मिक गतिविधि भने राम्रो रहला धार्मिकतामा मन जानाले केही मानसिक शान्ति पाइएला। चैत्र १५ गतेसम्म द्वादश राहुले शारीरिक पीडा,पेट सम्बन्धी समस्या देला । श्रमिक, वैतनिकमार्ग फलदायक हुने छन्। शत्रु गुप्तरूपमा सक्रिय रहन सक्ने हुनाले सावधानी अपेक्षित छ। वैदेशिक मामलामा भने त्यत्ति सफलता नमिल्ला ।

**कर्कट:** (हि.हू.हे.हो.डा.डि.डु.डे.डो. आद्य नामाक्षर)

तपाँइका ग्रह मध्यम छन्। बन्धुबान्धव तथा पुत्रकलत्रादिबाट आंशिक सहयोग मिल्ने, धन यश, प्रतिष्ठा आदिमा केही वृद्धि, पठनपाठन, बौद्धिक कार्य सम्पन्न हुनेछ। कृषिकार्य वा व्यवसायबाट लाभ मिल्ला । चैत्र १५ गतेसम्म एकादश राहुका कारण आफ्नो आय तथा काम कार्यमा सफलता मिल्ला । मान्यजनका सहयोग र सहानुभूतिले मन प्रसन्न होला, स्वास्थ्य पनि निक्कै सप्रेला । कार्तिक २३ गतेसम्म गुरुको अनुकूलताले अध्ययन वा सम्वन्धितकार्य सहित दाम्पत्य सहयोग पनि राम्रो रहनेछ । चन्द्रमाको जप-व्रत-पूजा आदि गर्नाले लाभ होला । चैत्रको उत्तरार्धबाट चतुर्थ केतुका कारण जग्गा जमीन वाहन आदिको काममा केही सावधानी अपनाउनु पर्ला। वर्षको उत्तरार्धको अपेक्षो पूर्वार्धको समय अनुकूल होला ।

**सिंह:** (मा.मि.मु.मे.मो.टा.टी.टू.टे. आद्य नामाक्षर)

तपाँइका ग्रहस्थिति साधारणतया सन्तोषजनक छन्। परिवार तथा मित्रबान्धवबाट प्राप्त हुने साथ-सहयोगबाट मन सन्तोष हुनेछ, मानसिक प्रसन्नताले उत्साहवर्धन होला,धन, यश, प्रतिष्ठा आदिमा वृद्धि आउनेछ। छैठो शनि रोग र शत्रु दुबैको दमन गर्ने खालको होला कुनै शत्रुविवाद भइहाले पनि आफ्नो विजय होला। कुनै मुद्दामामला भएमा यसै वर्ष विजय मिल्ला ।भाद्र २५ गतेबाट राहु दशम हुने हुनाले राज्यसम्बन्धी काममा केही प्रतिकूलता मिल्ला कुनै पनि सरकारी काम गर्दा विशेष सावधानी अपेक्षित छ । कार्त्तिक २७ गतेसम्म गुरु पञ्चम छन् अतः यस समयमा अध्ययन अध्यापन र धार्मिककृत्यहरू सफल होलान् ।वर्षान्तमा केतुले गर्दा शारीरिक वाधा कष्ट हुन जाला । वैतनिक र श्रमको मार्ग फलदायक छ । स्वव्यवसायमा अत्यधिक संयम र सावधानी अपेक्षित छ।

**कन्या:** (टो.प.पी.पू.ष.(ण=ड)ठ.पे.पो. आद्य नामाक्षर)

तपाँइका ग्रहगोचर साधारणतया उत्तमजस्ता छन्। बन्धुबान्धव र परिवारबाट सद्भाव र सहयोग पाइएला,मान प्रतिष्ठा र यशमा वृद्धि, मान्यजनका सहयोग र सहानुभूतिले रोकिएका काम पूराहुँदै जानेछन् । आहार-विहार र दैनन्दिन जीवनका क्रियाकलापादिमा सावधान रहेमा स्वास्थ्य राम्रो रहनेछ। वर्षारम्भबाट आश्विन १४ गतेसम्म षष्ठगुरु हुनेहुनाले शत्रुप्रबल हुनसक्ने छन् आफ्ना गुप्तशत्रुले भित्रि आक्रमण गर्ने छन् अतः सावधान रहनुपर्ला, त्यसपछि गुरुको केही अनुकूलताले गर्दा अध्ययन-अध्यापनकार्य, धार्मिककार्य, तीर्थ-व्रतादिकृत्य आंशिक सफल तथा दाम्पत्य सहयोग आदि पनि पाइएला । चैत्रको उत्तरार्धबाट दोस्रो केतु आर्थिक समस्याको कारक हुनसक्ला । वैतनिक र श्रमिकमार्ग फलदायक छ। वर्षको उत्तरार्ध अधिक सफल हुनेछ ।

# वि०सं० २०७८सालको राशिफल

**तुला:** (रा.री.रु.रे.रो.ता.ती.तू.ते. आद्य नामाक्षर)

तपाँइका ग्रह सामान्यतया त्यत्ति राम्रा छैनन्। शनिको अढैया दशाले मानसिक तनाव, मिथ्यापवाद, कामकार्यमा विलम्बता, दुःख परेशानी आइपर्ने, शारीरिक कष्टले पनि अत्यन्त सताउने आदि हुन सक्नेछ । आहार-विहार र दैनन्दिन जीवनका क्रियाकलापादिमा अस्तव्यस्तता, चिन्ता, त्राश आदिको सामना गर्नुपर्ला, मित्र तथा बान्धवबाट विश्वासघात हुन सक्ला अतः संयमित हुन आवश्यक छ। साझेदारीको व्यवसायमा वादविवाद आइपर्ला। आफ्नो व्यवसायमा पनि त्यत्ति लाभ नमिल्ला अतः कुनै नवीन व्यवसाय प्रारम्भ नगरेकै राम्रो होला । राहु अष्टम हुने हुनाले शारीरिक बाधा, पेटसम्बन्धी रोगले आक्रमण गर्नेछ। वैतनिक र श्रमको मार्ग केही फलदायक रहला। शैक्षिकमार्ग पनि आंशिक सफल होला । वैदेशिक काम र न्यायिक काम अधुरो नै रहला ।

**वृश्चिक:** (तो.ना.नि.नू.ने.नो.या.यी.यू. आद्य नामाक्षर)

तपाँइका ग्रह राम्रै जस्ता छन् । परिवार तथा मित्रबान्धवहरूको सहयोग र सद्भावले गर्दा आफ्ना काममा सफलता प्राप्त होला र आत्मविश्वास पनि निक्कै बढ्ला, मानसम्मानको प्राप्ति, राजकीय पदप्राप्ति वा पदोन्नति, आर्थिकतामा क्रमिक सुधार व्यवसायबाट उचित लाभ, कृषिबाट पनि निकै लाभ हुनसक्ला। कुनै नवीन व्यवसाय गरेमा पनि सफलता पाइने सम्भावना रहला । आर्थिक लेनदेनमा भने सावधान हुन जाति रहला । वर्षारम्भबाट आश्विन १४गतेसम्म चौथो गुरु त्यत्ति अनुकूल नहोला अतः अध्ययन तथा धार्मिक-माङ्गलिक क्षेत्रमा भने बाधाअवरोध आउने सम्भावना छ । श्रमिक र वैतनिकमार्ग सफल, न्याय तथा वैदेशिकमार्ग अधूरो रहने छ। वर्षको पूर्वार्द्धभन्दा उत्तरार्द्ध बढी सन्तोषजनक छ ।

**धनु:** (ये.यो.भा.भी.भू.धा.फा.ढा.भे. आद्य नामाक्षर)

तपाँइका ग्रहगोचर त्यत्ति राम्रा छैनन् । अन्त्य साढेसाती शनिले पुत्रकलत्रादि, पशुचौपाया, कृषिकार्य आदिमा पनि सामान्य स्थिति होला, व्यर्थको तनाव र अपयश मनमा चिन्ताको कारक हुन जाला। रोकिएको कामकार्य पनि झन् अवरोध बढ्ने छ । आफ्ना इष्टमित्र हितैषीको सहयोग र आफ्नो आत्मबलले पनि बेलामा साथ नदिने छ । शत्रुबृद्धि गराउने, विपक्षी हावी हुने छन् सावधान हुनुपर्ला, आर्थिक विषमताको आभासले मनमा खिन्नता आदि हुन सक्ला । वर्षारम्भबाट आश्विन १४ गतेसम्म गुरुको केही अनुकूलताले भने धार्मिक, आध्यात्मिक, शैक्षिक तथा वाचिक क्षेत्रमा केही उन्नति हुनेछ। केतु बाह्रौं हुनाले अपव्यय, स्वास्थ्य बाधा, उदरविकार, आदिको कारक रहला । वैतनिक र श्रमको मार्ग आंशिक सफल अन्य सामान्य रहने देखिन्छ ।

**मकर:** (भो.जा.जी.जे.जू.जो.खा.खी.खू.खे.खो.गा.गी. आद्य नामाक्षर)

तपाँइका ग्रहस्थिति त्यत्ति सन्तोषजनक छैनन् । शनिको मध्य साढेसाती हुनाले त्यत्ति राम्रो समय देखिँदैन पुत्र कलत्रादिबाट असन्तोष, चौपायबाट हानि नोक्सानी, मिथ्यापवाद, व्यर्थगमन, अनावश्यक व्यय, शत्रु सामना, पशु चौपाया तथा स्वव्यवसायबाट नोक्सानी, अनावश्यक डर त्रासले मनमा भयको प्रकोप, आर्थिक अभावले केही नया कार्य गर्न असमर्थ, आफ्ना नजिकका व्यक्तिले नै धोका दिने छन्, कुनै वादविवादले ठुलै रूप पनि लिन सक्ने छ। अनेक समस्याहरू भएपनि गुरुको अनुकूलताले पठनपाठन तथा धार्मिकता, वाणीव्यवहारमा भने केही सन्तोषकारक होला, घरमा माङ्गलिक कार्यको योग छ । वर्षान्ततिर केही सुधारका लक्षण देखिने छन् । श्रमिक, वैतनिकमार्ग सफल रहला तर न्यायिक र बिदेश मामलामा सावधानी अपेक्षित छ।

**कुम्भ:** (गू.गे.गो.सा.सी.सू.से.सो.द. आद्य नामाक्षर)

तपाँइका ग्रहगोचर मध्यमजस्ता छन्। आद्य साढेसाती शनिको दशाले मानसिक तनाव, मिथ्यापवाद, कामकार्यमा विलम्बता, दुःख परेशानी आइपर्ने, शारीरिक कष्टले पनि अत्यन्त सताउने आदि हुन सक्नेछ । आहार-विहार र दैनन्दिन जीवनका क्रियाकलापादिमा अस्तव्यस्तता,अपयश, चिन्ता, त्राश आदिको सामना गर्नुपर्ला, मित्र तथा बान्धवबाट विश्वासघात हुन सक्ला अतः संयमित हुन आवश्यक छ। चौथो राहु केही प्रतिकूल छ, माता तथा मावली पक्षमा केही समस्या हुनजाला, दशम केतु सरकारी काममा अवरोध कारक सिद्ध होला। गुरु अनुकुल हुनाले धार्मिककृत्य र अध्ययन क्षेत्रमा केही सन्तोषकारक स्थिति रहला, विद्यार्थीवर्गले विशेष श्रम गरेमा सफलता पाउने छन्। सावधानीपूर्वक गरेमा वैदेशिक कामबाट केही आंशिक सफलता मिल्न जाला ।

**मीन:** (दी.दू.थ.झ.(ञ.=ज.)दे.दो.चा.ची. आद्य नामाक्षर)

तपाँइका ग्रहगोचर राम्रा छन् । मानसिक शान्ति, कामकार्यमा अभिरुचि, कृषि तथा पशुचौपायाबाट लाभ,वाहन सुख, यश, आत्मबल-इक्षाशक्ति,मानप्रतिष्ठा आदिमा वृद्धि,आर्थिकतामा सुधार तथा स्वजनको सहयोग र सद्भावले कामकार्यमा उन्नति होला। शत्रुहरूको हार, मित्रसुख, भाग्योदय, राज्यकार्यमा अनुकूल प्रभाव रोकिएका काम पनि सम्पन्न हुने तर गुप्त शत्रुबाट अप्रत्यक्ष अवरोध हुनाले सावधान हुनुपर्ला । आश्विन १४ गतेसम्म द्वादश गुरु अध्ययन अध्यापन र बौद्धिक क्षेत्रमा त्यत्ति सहयोगी नहुने त्यपछि भने गुरुको कृपाले धार्मिक तथा शैक्षिक क्षेत्रमा सुधार आउला,पठनपाठन तथा बौद्धिक कार्यमा उन्नति होला। आर्थिक तथा व्यावसायिक क्षेत्रमा आएको सुधारले चित्त प्रसन्न होला।

॥इति शम्। श्रीदुर्गार्पणमस्तु ॥

# अथाबकहडाचक्रसहितं वरवधूमेलापकचक्रमिदम्

| चरणागतः | चू चे | ली लू | अ इ | ओ वा | वे वो | कु घ | के को | हु हे | डी डू | मा मी | मो टा | टे टो | पू ष | पे पो | रु रे | ती तू | ना नी | नो या | ये यो | भू धा | भे भो | जु जे | खी खू | गा गी | गो सा | से सो | दू थ | दे दो |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| नामाद्याक्षरः | चो ला | ले लो | उ ए | वी वू | का की | ङ छ | हा ही | हो डा | डे डो | मू मे | टी टू | पा पी | ण ठ | रा री | रो ता | ते तो | नू ने | यी यू | भा भी | फा ढा | जा जी | जो ख | खे खो | गु गे | सी सू | दा दी | झ ञ | चा ची |
| नक्षत्रः | अश्विनी | भरणी | कृत्तिका | रोहिणी | मृगशि. | आर्द्रा | पुनर्वसु | तिष्य | श्लेषा | मघा | पू.फा. | उ.फा. | हस्ता | चित्रा | स्वाती | विशाखा | अनुरा. | ज्येष्ठा | मूल | पू षा | उ.षा. | अभिजि. | श्रवण | धनिष्ठा | शतभि. | पू.भा. | उ.भा. | रेवती |
| राशिः | मेषः | मेषः | मे. १ वृ. ३ | वृषः | वृ. २ मि. २ | मिथुनः | मि. ३ क. १ | कर्कटः | कर्कटः | सिंहः | सिंहः | सिं. १ कं. ३ | कन्याः | कं. २ तु. २ | तुलाः | तु. ३ वृ. १ | वृश्चिकः | वृश्चिकः | धनुः | धनुः | ध. १ म. ३ | मकरः | मकरः | म. २ कुं. २ | कुम्भः | कुं. ३ मी. १ | मीनः | मीनः |
| राशिस्वामीः | भौमः | भौमः | भौ. १ शु. ३ | शुक्रः | शु. २ बु. २ | बुधः | बु. ३ चं. १ | चन्द्रः | चन्द्रः | सूर्यः | सूर्यः | सू. १ बु. ३ | बुधः | बु. २ शु. २ | शुक्रः | शु. ३ भौ. १ | भौमः | भौमः | गुरुः | गुरुः | गु. १ श. ३ | शनिः | शनिः | शनिः | शनिः | श. ३ गु. १ | गुरुः | गुरुः |
| वर्णः | क्षत्रिः | क्षत्रिः | क्ष. १ वै. ३ | वैश्यः | वै. २ शू. २ | शूद्रः | शू. ३ वि. १ | विप्रः | विप्रः | क्षत्रिः | क्षत्रिः | क्ष. १ वै. ३ | वैश्यः | वै. २ शू. २ | शूद्रः | शू. ३ वि. १ | विप्रः | विप्रः | क्षत्रिः | क्षत्रिः | क्ष. १ वै. ३ | वैश्यः | वैश्यः | वै. २ शू. २ | शूद्रः | शू. ३ वि. १ | विप्रः | विप्रः |
| वश्यः | चतुष्पद | चतुष्पद | चतुष्पद | चतुष्पद | च. २ द्वि. २ | द्विपदः | द्वि. ३ ज. १ | जलचरः | जलचरः | चतुष्पद | चतुष्पद | च. १ द्वि. ३ | द्विपदः | द्विपदः | द्विपदः | द्वि. ३ की. १ | कीट | कीट | मनुष्यः | मनुष्यः | म. १ च. ३ | चतुष्पदः | चतुष्पद | च. २ द्वि. २ | द्विपदः | द्वि. ३ ज. १ | जलचरः | जलचरः |
| योनिः | अश्वः | गजः | अजः | सर्[illegible] | सर्पः | श्वानः | मार्जारः | अजः | मार्जारः | मूषकः | मूषकः | गौः | महिषः | व्याघ्रः | महिषः | व्याघ्रः | मृगः | मृगः | श्वानः | वानरः | नकूलः | नकूलः अजः | वानरः | सिंहः | अश्वः | सिंहः | गौः | गजः |
| वैरयोनिः | महिषः | सिंहः | व[illegible] | नकूलः | नकूलः | मृगः | मूषकः | वानरः | मूषकः | मार्जारः | मार्जरः | व्याघ्रः | अश्वः | गौः | अश्वः | गौः | श्वानः | श्वानः | मृगः | अजः | सर्पः | अजः गजः | अजः | गजः | महिषः | गजः | व्याघ्रः | सिंहः |
| गणः | देवः | नरः | राक्षसः | नरः | देवः | नरः | देवः | देवः | राक्षसः | राक्षसः | नरः | नरः | देवः | राक्षसः | देवः | राक्षसः | देवः | राक्षसः | राक्षसः | नरः | नरः | नरः देवः | देवः | राक्षसः | राक्षसः | नरः | नरः | देवः |
| नाडीः | आद्यः | मध्यः | अन्त्यः | अन्त्यः | मध्यः | आद्यः | आद्यः | मध्यः | अन्त्यः | अन्त्यः | मध्यः | आद्य | आद्यः | मध्यः | अन्त्यः | अन्त्यः | मध्यः | आद्यः | आद्यः | मध्यः | अन्त्यः | अन्त्यः | अन्त्यः | मध्यः | आद्यः | आद्यः | मध्यः | अन्त्यः |
| आसनः | अश्वः | प्रेतः | अग्निकु. | गौः | मृगः | भुजंगः | कमलः | कलशः | काकः | महिषः | शिलाः | शिलाः | गजः | मयूरः | दोलः | अजः | हंसः | कच्छपः | मूलः | शयनः | शयनः | शयनः नरः | नरः | आढकः | वृषः | भद्रपीठः | भद्रपीठः | चक्रः |

**गरुडादिवर्गाः**

| नामाक्षरः | अ इ उ ए ओ | क ख ग घ ङ | च छ ज झ ञ | ट ठ ड ढ ण | त थ द ध न | प फ ब भ म | य र ल व | श ष स ह |
|---|---|---|---|---|---|---|---|---|
| वर्गः | गरुडः | मार्जारः | सिंहः | श्वानः | सर्पः | मूषकः | मृगः | मेषः |
| शत्रुवर्गः | सर्पः | मूषकः | मृगः | मेषः | गरुडः | मार्जारः | सिंहः | श्वानः |

***विवाहमा नाडी दोष तथा त्यसको परिहार***- विवाहमा विविध पक्षहरूलाई सूक्ष्मतापूर्वक विचार गरिनु पर्ने कुरा शास्त्रहरूमा उल्लेख गरिएको छ उक्त मध्ये एक नाडी विचार पनि हो। समान नाडीमा विवाह निषिद्ध छ, त्यसमा पनि मध्य-मध्य नाडी अत्यन्तै त्याज्य छ तर विशेष अवस्थामा यसका केही परिहार (दोष नलाग्ने) यस प्रकार छन्– वर कन्या एकै राशि भिन्न नक्षत्रका वा एकै नक्षत्र फरक राशिका भएमा, वर-कन्या दुबैका नक्षत्र कृत्तिका, रोहिणी, मृगशिरा, आर्द्रा, तिष्य, ज्येष्ठा, श्रवण, उत्तरभाद्र तथा रेवती मध्ये कुनै भएमा, वर-कन्या दुबैका राशिस्वामी बुध, गुरु, शुक्रमध्ये कुनै एक भएमा नाडीको दोष निवारण हुन्छ। विशेष 'नाडीदोषस्तु विप्राणां वर्णदोषस्तु क्षत्रिये। गणदोषश्च वैश्येषु योनिदोषस्तु पादजान्।।' यस वचनानुसार ब्राह्मणवर्गमा नाडी विशेष विचार्य छ। अत्यावश्यक भएमा विधिपूर्वक महामृत्युञ्जय जप, हवन, यथाशक्ति गौ, सुवर्णादि दान आदिद्वारा दोष न्यून गर्न सकिन्छ।

# वरवधूगुणमेलापकसारिणी

गुणकोष्ठके १८ ऽधिके शुभः

| कन्या राशि | वर राशि → | मेष | | | वृष | | | मिथुन | | | कर्कट | | | सिंह | | | कन्या | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | नक्षत्र | अश्विनी | भरणी | कृति. १ | कृति. ३ | रोहिणी | मृ. २ | मृ. २ | आर्द्रा | पुन. ३ | पुन. १ | तिष्य | श्लेषा | मघा | पू.फा. | उ.फा. १ | उ.फा. ३ | हस्त |
| मेष | अश्विनी | २८ | ३३ | २८॥ | १८॥ | २१॥ | २२॥ | २५॥ | १६॥ | १८॥ | २४॥ | ३२॥ | २९ | २३ | २७ | १७॥ | १०॥ | ९॥ |
| | भरणी | ३४ | २८ | २९ | १९ | २२॥ | १४॥ | १७॥ | २५॥ | २६॥ | ३२॥ | २४॥ | २६॥ | २२ | २० | २८ | २१ | १९॥ |
| | कृ. १ | २७॥ | २९ | २८ | १८ | ११ | १७॥ | २०॥ | १९॥ | २०॥ | २६॥ | २७॥ | २४॥ | १६॥ | २० | २२ | १५ | १५ |
| वृष | कृ. ३ | १८॥ | २० | १९ | २८ | २१ | २७॥ | १८ | १७ | १८ | २३ | २४ | २१ | १८॥ | २२ | २४ | २०॥ | २०॥ |
| | रोहिणी | २३॥ | २३॥ | १२ | २१ | २८ | ३६ | २६॥ | २३ | २३ | २८ | २९ | १४ | १२॥ | २६॥ | २८ | २४॥ | २५॥ |
| | मृ. २ | २३॥ | १४॥ | १९॥ | २८॥ | ३५ | २८ | १८॥ | २३॥ | २३ | २८ | २१ | २३ | २१॥ | १७॥ | २५॥ | २२ | २५॥ |
| मिथुन | मृ. २ | २६॥ | १७॥ | २२॥ | २० | २६॥ | १९॥ | २८ | ३३ | ३२॥ | २० | १३ | १५ | २४ | २० | २८ | ३०॥ | ३४ |
| | आर्द्रा | १८॥ | २६॥ | २०॥ | १८ | २४ | २५॥ | ३४ | २८ | २५ | १२॥ | २० | १३ | २३ | २९ | २२ | २४॥ | २४॥ |
| | पुन. ३ | १८॥ | २५॥ | २२॥ | २० | २३ | २४ | ३२॥ | २४ | २८ | १५॥ | २२॥ | १७ | २३ | २७ | २१ | २३॥ | २४॥ |
| कर्कट | पुन. १ | २२॥ | २९॥ | २६॥ | २३ | २६ | २७ | १९ | १०॥ | १४॥ | २८ | ३५ | २९॥ | १७॥ | २१॥ | १५॥ | १७ | १८ |
| | तिष्य | ३१॥ | २२॥ | २७॥ | २४ | २७ | २० | १२ | १८ | २१॥ | ३५ | २८ | ३० | १८॥ | १४॥ | २४॥ | २६ | २७ |
| | श्लेषा | २६ | २४॥ | २३॥ | २० | १३ | २१ | १३ | १२ | १५ | २८॥ | २९ | २८ | १६ | १६॥ | १८॥ | २० | २० |
| सिंह | मघा | २१ | २१ | १७॥ | १८॥ | ११॥ | १९॥ | २२ | २२ | २१ | १७॥ | १९॥ | १७ | २८ | ३० | २६॥ | १६ | १६ |
| | पू.फा. | २७ | १९ | २१ | २२ | २५॥ | १७॥ | २० | २८ | २७ | २३॥ | १७॥ | १७॥ | ३० | २८ | ३४ | २३॥ | २२ |
| | उ.फा. १ | १८॥ | २७ | २२ | २३ | २७ | २५॥ | २८ | २१ | २१ | १७॥ | २६॥ | १९॥ | २६॥ | ३४ | २८ | १७॥ | १६॥ |
| कन्या | उ.फा. ३ | १२॥ | २१ | १६ | २०॥ | २४॥ | २३ | ३०॥ | २३॥ | २३॥ | १९ | २८ | २१ | १७ | २४॥ | १८॥ | २८ | २७ |
| | हस्त | १०॥ | १९॥ | १७ | २१॥ | २४॥ | २५॥ | ३३ | २२॥ | २३॥ | १९ | २८ | २२ | १८ | २२ | १६॥ | २६ | २८ |
| | चित्रा | १२॥ | ५॥ | १८॥ | २३ | १९॥ | ११॥ | १९ | २६ | २४॥ | २० | १२ | २६ | २३ | ९ | १५ | २४॥ | २७ |

| कन्या राशि | वर राशि → | कन्या | तुला | | | वृश्चिक | | | धनु | | | | मकर | | | | कुम्भ | | | मीन | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | नक्षत्र | चित्रा २ | चित्रा २ | स्वाती | विशा. ३ | विशा. १ | अनुराधा | ज्येष्ठा | मूल | पू.षा.।। | पू.षा.३।। | उ.षा. १ | उ.षा. ३ | श्रव१।। | श्रव२।। | धनि. २ | धनि. २ | शतभिषा | पू.भा. ३ | पू.भा. १ | उ.भा. | रेवती |
| मेष | अश्विनी | १२॥ | २२ | २७ | २२ | १९॥ | २६॥ | १५ | १२॥ | २४॥ | २६ | २३ | २६ | २७ | २५॥ | २१ | १९॥ | १४॥ | १५॥ | १५॥ | २५॥ | २७ |
| | भरणी | ४॥ | १४ | २९ | २२ | १९॥ | १७॥ | १९॥ | १९॥ | १७॥ | १९ | २५॥ | २८॥ | २७ | २५॥ | ११ | ९॥ | १९॥ | २३॥ | २३॥ | १८॥ | २७॥ |
| | कृ. १ | १७॥ | २७ | १५ | १९ | १६॥ | २०॥ | २६॥ | २४ | १७॥ | १९ | १२॥ | १५॥ | १२॥ | ११ | २६ | २४॥ | २६॥ | १८॥ | १८॥ | २०॥ | १२॥ |
| वृष | कृ. ३ | २३ | २२ | १० | १४ | २१॥ | २५॥ | ३१॥ | १९॥ | १३ | १४॥ | ८ | १४ | ११ | ९॥ | २४॥ | २९ | ३१ | २३ | २१ | २३ | १५ |
| | रोहिणी | १९॥ | १८॥ | १५ | ९ | १६॥ | ३०॥ | २४॥ | १३॥ | १९॥ | २१ | ११ | १७ | १९ | १७॥ | २१ | २५॥ | २४ | ३० | २८ | २७ | २० |
| | मृ. २ | १२॥ | ११॥ | २४॥ | १८ | २५॥ | २२॥ | २५॥ | १४॥ | १०॥ | १२ | १६॥ | २२॥ | २७ | २५॥ | १४ | १८॥ | २६॥ | २९ | २७ | १८ | २८ |
| मिथुन | मृ. २ | २१ | १४ | २७ | २०॥ | १५ | १२ | १५ | २३ | १९ | १७॥ | २५ | २० | २४॥ | २६ | ११॥ | १३ | २१ | २३॥ | २५॥ | १६॥ | २६॥ |
| | आर्द्रा | २७ | २० | २७ | २० | १४॥ | १८ | ४ | १६ | २८ | २६॥ | २८ | २३ | २३ | २४॥ | १७॥ | १९ | १२ | १७ | १९ | २६॥ | २६॥ |
| | पुन. ३ | २६॥ | १९॥ | २७ | २१ | १५॥ | २१॥ | ७ | १४ | २७ | २५॥ | २७ | २२ | २३ | २४॥ | १८ | १९॥ | १३ | १७ | १९ | २७ | २६॥ |
| कर्कट | पुन. १ | २० | १९॥ | २७ | २१ | २० | २६ | ११॥ | ८ | २१ | २२॥ | २१ | २६ | २७ | २५॥ | २२ | १३॥ | ७ | ११ | १७ | २५ | २४॥ |
| | तिष्य | १२ | ११॥ | २६॥ | २१ | २० | १९ | २२ | १७ | ११ | १२॥ | २२ | २७ | २५ | २३॥ | १३ | ४॥ | १४॥ | १८ | २४ | १८ | २७ |
| | श्लेषा | २५ | २४॥ | ११॥ | १६॥ | १५॥ | २० | २६ | २२॥ | १६ | १७॥ | ८ | १३ | १३ | ११॥ | २७ | १८॥ | १८॥ | १२॥ | १८॥ | २० | १२ |
| सिंह | मघा | २२ | २५ | ११ | १७ | २४॥ | २६॥ | ३४ | २४॥ | १९॥ | २१ | १० | ५॥ | ५॥ | ४ | १८॥ | २४ | २५ | १८ | १८॥ | १९॥ | १३ |
| | पू.फा. | ८ | ११ | २५ | १९ | २६॥ | २४॥ | २६॥ | १८॥ | १७॥ | १९ | २५॥ | २१ | १९॥ | १८ | ४॥ | १० | १९ | २४ | २४॥ | १७॥ | २५॥ |
| | उ.फा. १ | १४ | १७ | २६ | १७ | २४॥ | ३३॥ | १९॥ | १० | २५॥ | २७ | २६॥ | २२ | २१ | १९॥ | १२॥ | १८ | १२ | १६ | १६॥ | २७॥ | २५॥ |
| कन्या | उ.फा. ३ | २४॥ | १६॥ | २५॥ | १६॥ | १९ | २८ | १४ | १४ | २९॥ | २८ | ३०॥ | २५॥ | २४॥ | २६ | १६ | १६॥ | १०॥ | १४॥ | १७॥ | २८॥ | २६॥ |
| | हस्त | २८ | २० | २६॥ | १८॥ | २१ | २७ | १४ | १५ | २७ | २५॥ | २८॥ | २३॥ | २४॥ | २६ | २०॥ | २१ | ९॥ | १५॥ | १८॥ | २६॥ | २७॥ |
| | चित्रा | २८ | २० | १९ | २६॥ | २९ | १३ | २७ | २७ | १३ | ११॥ | २२ | १७ | १७॥ | १९ | १६॥ | १७ | २४ | १७॥ | २०॥ | १०॥ | २०॥ |

विवाहमा वरकन्याको नक्षत्रका आधारमा माथि लेखिएको सारणीबाट गुण ज्ञान गर्न सकिन्छ, तेर्सो वरको ठाडो कन्याको नक्षत्र जोडिने कोष्ठको अङ्क गुण हो, १८ अङ्क वा धेरै मिलेमा शुभ हुन्छ । वर-कन्याको परस्पर राशिबाट ९।५, २।१२, ६।८ परेमा दुष्कुट र अन्यमा सत्कुट हुन्छ। सत्कुट भएमा १६ गुण र दुष्कुट भएमा १८ गुणसम्म विवाह गर्नुहुदैन । २० गुणसम्म मध्यम र सो भन्दा माथि भएमा उत्तम हुन्छ । ग्रह नक्षत्रादिको किरणको असर प्रत्येक प्राणीमा प्रत्यक्ष-परोक्ष रूपमा अवश्य परिरहेको हुन्छ सोही अनुरुप विश्वका प्रत्येक मानिसमा भिन्नता हुने हो, अतः वर-कन्या दुवैको स्वभावगत मेलमिलाप पनि यसैबाट निर्धारित हुने र मिलान गरेरमात्र विवाह गर्नुपर्ने आप्तवचन रहेको छ ।

**प्रश्नद्वारा विवाह-चिन्तन–** तात्कालिक अवस्थामा विवाहसम्बन्धी जिज्ञासाको चिन्तन प्रश्नलग्नका आधारमा गर्नुपर्छ । केही उपयोगी संकेत यी हुन सक्छन्– शुभ ग्रहले युत वा देखिएका वृष, कर्क र तुला लग्न, चन्द्र-शुक्र समराशि वा समनवांशकमा भएमा, लग्नमा विषम राशिगत चन्द्र-शुक्रको दृष्टि भएमा, सप्तम भाव बुध-गुरु शुक्र वा चन्द्रले युत भएमा, समराशिको लग्न समराशिकै द्रेष्काणमा शुभ ग्रहको दृष्टि भएमा शिघ्र विवाहकारक हुन्छ भने कृष्णपक्षमा समराशिगत चन्द्र १, ६, ८ भावमा पापग्रहद्वारा युत वा देखिएमा, लग्नस्थ चन्द्रलाई मंगलले देखेमा, पंचमभावमा पाप ग्रह भई निचस्थ ग्रहद्वारा देखिएमा, लग्न वा सप्तमका पाप ग्रहलाई निचस्थ ग्रहद्वारा देखिएमा विवाहमा वाधा वा अयोग्य होला ।

# वरवधूगुणमेलापकसारिणी

गुणकोष्ठके १८ ऽधिके शुभः

| कन्या राशि | वर राशि → | मेष | | | वृष | | | मिथुन | | | कर्कट | | | सिंह | | | कन्या | | | तुला | | | वृश्चिक | | | धनु | | | | मकर | | | | कुम्भ | | | मीन | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| राशि | नक्षत्र | अश्विनी | भरणी | कृति. १ | कृति. ३ | रोहिणी | मृ. २ | मृ. २ | आर्द्रा | पुन. ३ | पुन. १ | तिष्य | श्लेष | मघा | पू.फा. | उ.फा. १ | उ.फा. ३ | हस्त | चित्रा २ | चित्रा २ | स्वाती | विशा. ३ | विशा. १ | अनुराधा | ज्येष्ठा | मूल | पू.षा.।। | पू.षा.३।। | उ.षा. १ | उ.षा. ३ | श्रव १।। | श्रव २।। | धनि. २ | धनि. २ | शतभिषा | पू.भा. ३ | पू.भा. १ | उ.भा. | रेवती |
| तुला | चित्रा २ | २२ | १५ | २८ | २३ | १९॥ | ११॥ | १३ | २० | १८॥ | १९॥ | ११॥ | २५॥ | २६ | १२ | १८ | १७॥ | २० | २१ | २८ | २७ | ३४॥ | २४॥ | ८॥ | २२॥ | २७ | १३ | ११॥ | २२ | २५ | २५॥ | २७ | २४॥ | १९ | २६ | १९॥ | १३॥ | ३॥ | १३॥ |
| तुला | स्वाती | २८ | २९ | १७ | १२ | १५ | २५॥ | २७ | २६ | २७ | २८ | २७॥ | १३॥ | १३ | २५ | २६ | २५॥ | २७॥ | २१ | २८ | २८ | २० | १० | २२॥ | १७॥ | २३ | २७ | २५॥ | १९ | २२ | २३ | २४॥ | २८॥ | २३ | २१ | २७ | २१ | १९॥ | १२॥ |
| तुला | विशा. ३ | २२ | २३ | २० | १५ | १० | १८ | १९॥ | २० | २० | २१ | २१ | १७॥ | १८ | २० | १८ | १७॥ | १८॥ | २७॥ | ३४॥ | १९ | २८ | १८ | १८ | २२॥ | २७ | २१ | १९॥ | १४ | १७ | १६ | १७॥ | ३१ | २५॥ | २६ | २१ | १५ | १३ | ५॥ |
| वृश्चिक | विशा. १ | १७॥ | १८॥ | १५॥ | २०॥ | १५॥ | २३॥ | १३ | १३॥ | १३॥ | १९ | १९ | १५॥ | २३॥ | २५॥ | २३॥ | १८ | १९ | २८ | २३॥ | ८ | १७ | २८ | २८ | ३२॥ | २२॥ | १६॥ | १७॥ | ९॥ | १३ | १२ | ११ | २७ | २६ | २६॥ | २१॥ | २१ | १९ | ११॥ |
| वृश्चिक | अनुराधा | २५॥ | १५॥ | २०॥ | २५॥ | २८॥ | २१॥ | ११ | १६ | २०॥ | २६ | १९ | २१ | २६॥ | २२॥ | ३१॥ | २६ | २६ | १२ | ७॥ | २१॥ | १७ | २८ | २८ | ३१ | १६॥ | १४॥ | १५॥ | २२॥ | २६ | २७ | २६ | १४ | १३ | २२ | २६॥ | २६ | १९ | २७ |
| वृश्चिक | ज्येष्ठा | १३ | १८॥ | २५॥ | ३०॥ | २३॥ | २३॥ | १३ | ३ | ५ | १०॥ | २१ | २६ | ३३ | २५॥ | १८॥ | १३ | १२ | २५ | २०॥ | १५॥ | २०॥ | ३१॥ | ३० | २८ | १५ | १७॥ | १८॥ | १७॥ | २१ | २१ | २० | २७ | २६ | १९ | १२ | ११॥ | २२ | २१ |
| धनु | मूल | ११॥ | १९॥ | २४ | १८॥ | १२॥ | १२॥ | २१ | १५ | १२ | ८ | १७ | २३॥ | २४॥ | १८॥ | १० | १३ | १३ | २६ | २६ | २१ | २६ | २३॥ | १६॥ | १६ | २८ | २८ | २६॥ | २६॥ | १५ | १५ | १६॥ | २० | २८॥ | २१॥ | १४॥ | १६ | २५ | २६॥ |
| धनु | पू. षा.।। | २५॥ | १८॥ | १७॥ | १२ | १८॥ | १०॥ | १९ | २७ | २७ | २३ | १३ | १७ | १९॥ | १७॥ | २५॥ | २८॥ | २७ | १२ | १२ | २७ | २० | १७॥ | १६॥ | १८॥ | २८ | २८ | २६॥ | ३४ | २२॥ | २३ | २४॥ | ८ | १६॥ | २३॥ | ३०॥ | ३२ | २३ | ३२ |
| धनु | पू.षा. ३।। | २७ | २० | १९ | १३॥ | २० | १२ | १७॥ | २५॥ | २५॥ | २४॥ | १४॥ | १८॥ | २१ | १९ | २७ | २७ | २५॥ | १०॥ | १०॥ | २५॥ | १८॥ | १८॥ | १७॥ | १९॥ | २६॥ | २६॥ | २८ | ३२॥ | २४ | २४॥ | २३ | ९॥ | १५ | २२ | २९ | ३३॥ | २४॥ | ३३॥ |
| धनु | उ.षा. १ | २४ | २५॥ | १२॥ | ७ | १० | १६॥ | २५ | २७ | २७ | २३ | २४ | ९ | १० | २५॥ | २६॥ | २९॥ | २८॥ | २१ | २१ | १९ | १३ | १०॥ | २४॥ | १८॥ | २६॥ | ३६ | ३४॥ | २८ | १६॥ | १६॥ | १८ | १५ | २३॥ | २३॥ | २९॥ | ३१ | ३२ | २३ |
| मकर | उ.षा. ३ | २८ | २९॥ | १६॥ | १४ | १७ | २३॥ | २० | २२ | २२ | २८ | २९ | १४ | ६॥ | २२ | २३ | २५॥ | २४॥ | १७ | २४ | २२ | १६ | १४ | २८ | २२ | १६ | २५॥ | २७ | १७॥ | २८ | २८ | २६॥ | २६॥ | १७ | १७ | २३ | ३०॥ | ३१॥ | २२॥ |
| मकर | श्रव. १।। | २८ | २८ | १४॥ | १२ | १८ | २७ | २३॥ | २१ | २२ | २८ | २६ | १५ | ७॥ | १९॥ | २१ | २३॥ | २४॥ | १८॥ | २५॥ | २२ | १६ | १४ | २८ | २३ | १७ | २३ | २४॥ | १४॥ | २५ | २८ | २६॥ | ३० | २०॥ | १८ | २३ | ३०॥ | २९॥ | २३॥ |
| मकर | श्रव. २।। | २६॥ | २६॥ | १३ | १०॥ | १६॥ | २५॥ | २५ | २२॥ | २३॥ | २६॥ | २४॥ | १३॥ | ६ | १८ | १९॥ | २५ | २६ | २० | २७ | २३॥ | १७॥ | १३ | २७ | २२ | १८॥ | २४॥ | २३ | १६ | २३॥ | २६॥ | २८ | २८॥ | २२ | १९॥ | २४॥ | २९ | २८ | २२ |
| मकर | धनि. २ | २१ | १२ | २७ | २४॥ | २१ | १३ | ९॥ | १६॥ | १६ | २२ | १३ | २८ | १९॥ | ५॥ | १३॥ | १६ | १९॥ | १६॥ | २३॥ | २६॥ | ३० | २८ | १४ | २८ | २१ | ८ | ९॥ | १६ | २६॥ | २८ | २६॥ | २८ | १८॥ | २३॥ | १९ | २६॥ | १५॥ | २२॥ |
| कुम्भ | धनि. २ | १९॥ | १०॥ | २५॥ | ३० | २६॥ | १८॥ | १२ | १९ | १८॥ | १३॥ | ४॥ | १९॥ | २५ | ११ | १९ | १७॥ | २१ | १८ | १९ | २२ | २५॥ | २७ | १३ | २७ | २९॥ | १६॥ | १५ | २४॥ | १८ | १९॥ | २१ | १९॥ | २८ | ३३ | २८॥ | १८ | ७ | १४ |
| कुम्भ | शतभिषा | १४॥ | २०॥ | २७॥ | ३२ | २५ | २६॥ | २० | १२ | १३ | ८ | १४॥ | २०॥ | २७ | २१ | १३ | ११॥ | ९॥ | २५ | २६ | २० | २६ | २७॥ | २२ | २० | २२॥ | २४॥ | २३ | २४॥ | १८ | १८ | १९॥ | २४॥ | ३३ | २८ | १९ | ८॥ | १७ | १६ |
| कुम्भ | पू.भा. ३ | १७॥ | २४॥ | १९॥ | २४ | ३१ | ३१ | २४॥ | १७ | १८ | १३ | २० | १३॥ | १९ | २५ | १७ | १५॥ | १७॥ | १८॥ | १९॥ | २८ | २१ | २२॥ | २८॥ | १३ | १५॥ | ३०॥ | २९ | ३०॥ | २४ | २४ | २५॥ | २० | २८॥ | १९ | २८ | १७॥ | २२॥ | २० |
| मीन | पू.भा. १ | १५॥ | २२॥ | १७॥ | २० | २७ | २७ | २५॥ | १८ | १९ | १८ | २५ | १८॥ | १७॥ | २३॥ | १५॥ | १६॥ | १८॥ | १९॥ | १२॥ | २१ | १४ | २१ | २७ | ११॥ | १५ | ३० | ३१॥ | ३० | २९॥ | २९॥ | २८ | २५॥ | १७ | ७॥ | १६॥ | २८ | ३३ | ३०॥ |
| मीन | उ.भा. | २५॥ | १६॥ | १९॥ | २२ | २६ | १८ | १६॥ | २५॥ | २७ | २६ | १९ | २० | १८॥ | १६॥ | २६॥ | २७॥ | २६॥ | ९॥ | २॥ | १९॥ | १२ | १९ | २० | २२ | २४ | २२ | २३॥ | ३१ | ३०॥ | २९॥ | २८ | १४॥ | ६ | १६ | २१॥ | ३३ | २८ | ३४ |
| मीन | रेवती | २६ | २५॥ | १२॥ | १५ | १८ | २७ | २५॥ | २४॥ | २६॥ | २५॥ | २७ | १४ | १४ | २४॥ | २४॥ | २५॥ | २६॥ | २०॥ | १३॥ | ११॥ | ५॥ | १२॥ | २७ | २२ | २६॥ | २९ | ३०॥ | २१ | २०॥ | २१॥ | २० | २२॥ | १४ | १६ | १८ | २९॥ | ३४ | २८ |

षडष्टके द्वेचवियोगकारी भनेदपुत्रस्त्वशुचित्रिकोणे। द्विर्द्वाशेनिर्धनताव्ययश्च नाडीसमाने मरणायनूनम् ।।
यस वचनानुसार वरकन्याको परस्पर राशिबाट २-१२, ६-८, ९-५ पर्नुहुँदैन तर निम्न राशिहरूमा उक्त दोष छैन।

**वर-कन्याको राशिबाट ग्राह्य द्विर्द्वादश**

| | | | | | | |
|---|---|---|---|---|---|---|
| २ | ४ | ६ | ८ | १० | १२ | ५ |
| ३ | ५ | ७ | ९ | ११ | १ | ६ |

**वर-कन्याको राशिबाट ग्राह्य षडाष्टक**

| | | | | | |
|---|---|---|---|---|---|
| २ | ४ | ६ | १ | १० | १२ |
| ७ | ९ | ११ | ८ | ३ | ५ |

**वर-कन्याको राशिबाट ग्राह्य नवपञ्चक**

| | | | | | | | |
|---|---|---|---|---|---|---|---|
| १ | १ | २ | २ | ३ | ५ | ७ | ९ |
| ५ | ९ | ६ | १० | ७ | ९ | ११ | १२ |

**नोटः जु जे जो ख अभिजित् (उत्तराषाढको चौथो पाउ र श्रवणको १५ भागको १ भाग मिलेर बनेको हुन्छ।**

**भौमदोष ज्ञानम्** - लग्ने १ व्यये १२ च पाताले ४ जामित्रे ७ चाष्टमे ८कुजे। पत्नी हन्ति स्वभर्तारं भर्ता भार्यां न संशयः।।
**भौमदोष परिहारः** जामित्रे च यदा सौरिर्लग्ने वा हिबुकेऽथ वा। नवमे द्वादशे चैव भौमदोषो न विद्यते।।
न मङ्गली चन्द्रभृगू द्वितीये न मङ्गली पश्यति यस्य जीवः। न मङ्गली केन्द्रगते च राहु न मङ्गली मङ्गलराहुयोगे।।

## निरयण प्रथम लग्नसारिणी

| अंशा | ० मेष | १ वृष | २ मिथुन | ३ कर्कट | ४ सिंह | ५ कन्या | ६ तुला | ७वृश्चिक | ८ धनु | ९ मकर | १० कुम्भ | ११ मीन | अंशा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ० | २।५१ | ६।५२ | ११।४३ | १७।२० | २३।१० | २८।५२ | ३४।३१ | ४०।१९ | ४६।४ | ५१।१५ | ५५।३४ | ५९।१५ | ० |
| १ | २।५८ | ७।१ | ११।५३ | १७।३२ | २३।२२ | २९।४ | ३४।४३ | ४०।३० | ४६।१६ | ५१।२५ | ५५।४१ | ५९।२२ | १ |
| २ | ३।६ | ७।९ | १२।४ | १७।४४ | २३।३४ | २९।१५ | ३४।५४ | ४०।४२ | ४६।२७ | ५१।३४ | ५५।४९ | ५९।२९ | २ |
| ३ | ३।१३ | ७।१८ | १२।१५ | १७।५५ | २३।४५ | २९।२६ | ३५।६ | ४०।५४ | ४६।३८ | ५१।४४ | ५५।५७ | ५९।३७ | ३ |
| ४ | ३।२१ | ७।२७ | १२।२६ | १८।७ | २३।५७ | २९।३७ | ३५।१७ | ४१।५ | ४६।४९ | ५१।५३ | ५६।५ | ५९।४४ | ४ |
| ५ | ३।२८ | ७।३६ | १२।३७ | १८।१९ | २४।८ | २९।४९ | ३५।२९ | ४१।१७ | ४७।० | ५२।२ | ५६।१२ | ५९।५१ | ५ |
| ६ | ३।३६ | ७।४५ | १२।४७ | १८।३० | २४।२० | ३०।० | ३५।४० | ४१।२९ | ४७।११ | ५२।११ | ५६।२० | ५९।५८ | ६ |
| ७ | ३।४४ | ७।५५ | १२।५८ | १८।४२ | २४।३१ | ३०।११ | ३५।५२ | ४१।४१ | ४७।२१ | ५२।२० | ५६।२८ | ०।५ | ७ |
| ८ | ३।५१ | ८।४ | १३।९ | १८।५४ | २४।४३ | ३०।२२ | ३६।३ | ४१।५२ | ४७।३२ | ५२।२९ | ५६।३५ | ०।१२ | ८ |
| ९ | ३।५९ | ८।१३ | १३।२० | १९।५ | २४।५४ | ३०।३४ | ३६।१५ | ४२।४ | ४७।४३ | ५२।३८ | ५६।४३ | ०।१९ | ९ |
| १० | ४।७ | ८।२३ | १३।३२ | १९।१७ | २५।५ | ३०।४५ | ३६।२६ | ४२।१६ | ४७।५४ | ५२।४७ | ५६।५० | ०।२६ | १० |
| ११ | ४।१५ | ८।३२ | १३।४३ | १९।२९ | २५।१७ | ३०।५६ | ३६।३८ | ४२।२७ | ४८।४ | ५२।५६ | ५६।५८ | ०।३३ | ११ |
| १२ | ४।२२ | ८।४१ | १३।५४ | १९।४१ | २५।२८ | ३१।७ | ३६।४९ | ४२।३९ | ४८।१५ | ५३।५ | ५७।५ | ०।४० | १२ |
| १३ | ४।३० | ८।५१ | १४।५ | १९।५२ | २५।४० | ३१।१९ | ३७।१ | ४२।५० | ४८।२५ | ५३।१३ | ५७।१२ | ०।४८ | १३ |
| १४ | ४।३८ | ९।१ | १४।१६ | २०।४ | २५।५१ | ३१।३० | ३७।१२ | ४३।२ | ४८।३६ | ५३।२२ | ५७।२० | ०।५५ | १४ |
| १५ | ४।४६ | ९।१० | १४।२८ | २०।१६ | २६।२ | ३१।४१ | ३७।२४ | ४३।१४ | ४८।४६ | ५३।३१ | ५७।२७ | १।२ | १५ |
| १६ | ४।५४ | ९।२० | १४।३९ | २०।२७ | २६।१४ | ३१।५३ | ३७।३६ | ४३।२५ | ४८।५७ | ५३।३९ | ५७।३५ | १।९ | १६ |
| १७ | ५।२ | ९।३० | १४।५० | २०।३९ | २६।२५ | ३२।४ | ३७।४७ | ४३।३७ | ४९।७ | ५३।४८ | ५७।४२ | १।१६ | १७ |
| १८ | ५।१० | ९।४० | १५।२ | २०।५१ | २६।३७ | ३२।१५ | ३७।५९ | ४३।४८ | ४९।१७ | ५३।५६ | ५७।४९ | १।२३ | १८ |
| १९ | ५।१८ | ९।५० | १५।१३ | २१।३ | २६।४८ | ३२।२६ | ३८।१० | ४४।० | ४९।२७ | ५४।५ | ५७।५६ | १।३० | १९ |
| २० | ५।२७ | १०।० | १५।२४ | २१।१४ | २६।५९ | ३२।३८ | ३८।२२ | ४४।११ | ४९।३८ | ५४।१३ | ५८।४ | १।३८ | २० |
| २१ | ५।३५ | १०।१० | १५।३६ | २१।२६ | २७।११ | ३२।४९ | ३८।३४ | ४४।२३ | ४९।४८ | ५४।२१ | ५८।११ | १।४५ | २१ |
| २२ | ५।४३ | १०।२० | १५।४७ | २१।३८ | २७।२२ | ३३।० | ३८।४५ | ४४।३४ | ४९।५८ | ५४।२९ | ५८।१८ | १।५२ | २२ |
| २३ | ५।५२ | १०।३० | १५।५९ | २१।४९ | २७।३३ | ३३।१२ | ३८।५७ | ४४।४६ | ५०।८ | ५४।३८ | ५८।२५ | १।५९ | २३ |
| २४ | ६।० | १०।४० | १६।११ | २२।१ | २७।४५ | ३३।२३ | ३९।९ | ४४।५७ | ५०।१७ | ५४।४६ | ५८।३२ | २।७ | २४ |
| २५ | ६।९ | १०।५० | १६।२२ | २२।१२ | २७।५६ | ३३।३५ | ३९।२० | ४५।८ | ५०।२७ | ५४।५४ | ५८।४० | २।१४ | २५ |
| २६ | ६।१७ | ११।१ | १६।३४ | २२।२४ | २८।७ | ३३।४६ | ३९।३२ | ४५।२० | ५०।३७ | ५५।२ | ५८।४७ | २।२१ | २६ |
| २७ | ६।२६ | ११।११ | १६।४५ | २२।३६ | २८।१८ | ३३।५७ | ३९।४४ | ४५।३१ | ५०।४७ | ५५।१० | ५८।५४ | २।२९ | २७ |
| २८ | ६।३४ | ११।२२ | १६।५७ | २२।४७ | २८।३० | ३४।९ | ३९।५५ | ४५।४२ | ५०।५६ | ५५।१८ | ५९।१ | २।३६ | २८ |
| २९ | ६।४३ | ११।३२ | १७।९ | २२।५९ | २८।४१ | ३४।२० | ४०।७ | ४५।५३ | ५१।६ | ५५।२६ | ५९।८ | २।४३ | २९ |

**नेपालदेशीय २४°। २९'। २५" अयनांशीया निरयण**
**प्रथम लग्नसारणी काठमण्डपनगर्याः यत्राक्षांशाः २७°। ४२', पलभा ६।१८**
**परमक्रान्तिः २३° । २६' । १५"**

आवश्यक परेका दिनको समयलाई इष्ट घ.प.मा बदल्ने अर्थात् इष्टकाल ल्याउने। त्यही समयको स्पष्टसूर्यको राशि तथा अंशानुसार सारणीबाट फल लिने। ठाडो (माथिबाट तल) सूर्यको राशि र तेर्सो (बाँयाबाट दाँया) स्पष्ट सूर्यको अंश हो। दुवैको मिलन भएको कोठामा रहेको अंक नै फल हो। उक्तफलमा इष्टकाल जोड्ने र त्यस योगफल बराबर को अङ्क सारिणीमा खोज्ने, जहाँ मिल्दछ त्यसैको आधारमा ठाडोजाँदा पाइएको अङ्क इष्ट लग्नको राशिको अङ्क तथा बायाँ जाँदा पाइएको अङ्क अंशको अङ्क हुन्छ। उक्त योग फलको तुल्य अङ्क नभेटिएमा नजिकको सानो अङ्क लिने, उक्तयोगफल भन्दा धेरै (ठुलो) अङ्क लिनु हुदैन। योगफलतुल्य अङ्क ठ्याक्क मिलेमा कला विकला शून्य हुन्छन्। केही शेष रहेमा अनुपातद्वारा कला विकला ल्याउनु पर्दछ।

**उदाहरण-** मानौं कुनैदिनको सूर्योदय प्रातः ६।५० बजे छ, त्यही दिन १५।२० बजेको लग्नल्याउँदा- (१५।२०) - (६।५०) = ८।३०, अब ८।३० गुणा २।३० = २१।१५ इष्ट घ.प. भयो। कल्पित स्पष्टसूर्यको राशि सङ्ख्या ८ र अंश सङ्ख्या २ का आधारमा सारिणीबाट फल लिंदा ४६।२७ प्राप्त भयो, यसमा २१।१५ इष्ट घ.प. जोड्दा ७।४२ भयो। यसको सबैभन्दा नजिकको अंक सारिणीमा खोज्दा ७।३६ प्राप्त भयो।यसका आधारमा लग्नको राशि सं.१ र अंश सं. ५ प्राप्त भयो, अब आफ्नो अभिष्ट योगफल ७।४२ र सारिणीबाट प्राप्त सं. ७।३६ को अन्तर ६ छ सारिणीमा अभिष्ट क्रमागत दुई कोठाको अन्तर (७।४५-७।३६) = ९ छ, अब ६ अन्तरको फल कला विकलामा यसप्रकार निकाल्नु पर्दछ- (६०X ६ ÷ ९) = ४० कला र ० विकला प्राप्त हुन्छ यस प्रकार प्राप्त सबै फललाई यथास्थानमा राख्दा अभिष्ट लग्न राश्यादि १।५।४०।० हुन्छ। यस्तै रीतले अन्य बेलाको लग्न निकाल्न सकिन्छ।

**विशेष-** सारणीबाट लग्न ल्याउँदा धेरैले गतेलाई अंश मानेर सारणीको ठीक प्रयोग नगरेको पाईन्छ। सारणीका देखाइएको ०, १, २ ... २९ स्पष्टसूर्यको गतांश हो गते होइन। सारणीको प्रयोग स्पष्टसूर्यका आधारमा नै गर्नु पर्दछ। स्पष्टसूर्य निकाल्न अप्ठेरो भएमा यसै पञ्चाङ्गमा दिइएको दैनिक उदयकालिक स्पष्ट सूर्यको उपयोग गर्नु बेश हुन्छ। लग्न ल्याइ सकेपछि पनि यसै पञ्चाङ्गमा दिइएको दैनिक लग्नारम्भ तालिका अनुसार मिलान गर्नु राम्रो हुनेछ।

